# CAUSE OF TREATY AND IMPACT

**Nikesh Maharjan (Khemanda),**
**M.A 1st Semester Roll no:- 02(2075),**
**Medieval and Modern History of Nepal, NeHCA- 552,**
**Tribhuvan University.**

---

**<u>सुगौलि सन्धि अघी, नेपाल अंग्रेज युद्ध गर्नुको कारण</u>**

- ❖ नेपाल र कम्पनी सर्कारको विस्तारवादीको नीतिः-
  - सन् १६०० मा वेलायती महारानी बाट पूर्वी मुलुकमा गएर व्यापार गर्न एक व्यापारीक संस्थालाई अनुमती प्रदान गरीयो,
  - पलासीको तथा बक्सरको युद्ध भए पछी, भारतको बंगाल, विहार, उडिसामा अंग्रजको नियन्त्रण भयो, यो एउँटा Industrial Revoluation थियो
  - पृथ्वीनारायण शाहको वि.सं १८१९ मा मकवानपुरको विजय पछी नेपालको सिमाना अंग्रेज साम्राज्यको सिमाना सम्म पुग्यो।
  - भीम्सेन थापाको मुख्तीयारीको समयमा नेपालको सिमाना पूर्वमा टिष्टा देखी पश्चिममा काँगडा सम्म विस्तार
    भएकोले र खुल्ला सिमाना भएकाले ठाउँ ठाउँमा समस्या उत्पन्न आउँदा नेपाल अंग्रेजक युद्ध भयो।



- ❖ नेपालमा कम्पनी सर्कारका स्वार्थहरुः-
  - नेपालको बाटो हुदैं टिब्बटमा व्यापार गर्न चाहनु।
  - नेपालमा प्राकृतिक स्रोत हरुको भरीपूर्णता रहनु,
  - भारतका गर्मि स्थानमा बसेका अंग्रेजहरु, नेपालको चिसो मौसम भएको भूभाग कुमाउ, गढवाल, नैनीताल, दार्जलीङ्ग जस्तो थाउँ कब्जा जमाउँन चाहनु।
  - नेपाल लाई English Colony मा पार्ने ईच्छा।
  - सुन अधीकतम भएको देशमाथी नियन्त्रण गर्न चाहनु।
- ❖ East India Company Government को व्यापारी नीतिः-
  - नेपालमा अंग्रेजहरुले आफ्नो उद्योगलाई वलीयो वनाउँन चाहन्थ्यो, तर भिमसेन थापाले थाहाा थियो यीनिहरु **"सियो बनेर पस्ने हात्ती बनेर निस्कीने"** भारतमा जस्तो हाल नेपालमा पनी सो सरहनै हुन्छ भनेर अंग्रेज हरुलाई नेपालमा प्रवेशमा रोक लगाउँनु र सन् १९९२ र १८०१ को सन्धि कार्यान्वयन गरेर नेपालबाट फाईदा लिनु पर्दछ भन्ने भएको अर्को कारण हुनुँले।

- East India Company Government ले नेपालसंग सम्पर्क राख्न असफल हुनुः-
  - पृथवीनारायण शाहको आर्थिक नाकाबन्धिको कारणले East India Company Government लाई घाटा भयो, सन् १७६७ मा किनलक २४०० सेना गोर्खाको विरुद्धमा सिन्धुली युद्ध गरे,
  - सन् १८०१ को सन्धी पछी १८०२ मा Captain Knox Mission नेपाल आएर असफल भएकाले त्यसलाई सफल बनाउँनुको कारण।
- २२से २४से राजाहरुको प्रतिशोधको भावनाः-
  - एकीकरण अभियान बाट असन्तुष्टित २२से २४से राजाहरु मौका पाउँने वित्तिकै पुनः गुमेको राज्य लिन चाहन्थे यस्को फाईदा अंग्रेजहरुले पुनः राज्य फर्काउने लोभ देखाई हारेका शासक हरु आफ्नो पक्ष्मा लिएको र नेपाल विरुद्ध युद्धमा लागेको र यस्तो लोभ लालजमा परेका शासकहरु मध्ये हण्डुरका राजा रामशरण, काँगडाका राजा संसारचंद र पाल्पाका राजकुमार रविसेन थिए। नेपाल बाटनै सहयोग पाउँन सक्नेहुनाले।
- नेपालको शैनिक नीति र गतिविधीः-
  - भीमसेन थापाले आफ्ना शैनिकहरुलाई फ्रान्सेली द्वारा शैनिक तालीम दिलाएको हुनाले, यस् माथी East India Company Government को डाहा र गोर्खाली सेनाको वृद्‌दी हुदै जानु, हातहतियारको संकलन तथा शेनिक तालीम बाट डराउनुको कारण।



- अंग्रेजहरुको लागी अनुकूल स्थितिः-
  - पंजापका राजा रनजीत सिंह जब सन् १८०९ मा अंग्रेज हरु सित अमृतसरको सन्धि गर्न बाध्यता भयो तब नेपाल कमजोर बन्न पुगेको र अंग्रेजहरुका लागी स्थिती सकारात्मक बनेर गएको, यसै समयावधीमा यूरोपमा नेपोलियनको पतन भएको कारणले स्थिती बलियोहुन पुग्यो र सन् १८१३ मा साम्राज्यवादी नितिका समर्थक Lord Hastings, Governer General भएर भारतमा प्रवेश गर्नु East India Company Government लाई नेपाल संग युद्ध गर्न बल पुग्यो।
- नेपालीको शक्ति बढेको देखेर भारतीय राज्यपनि आशावादी हुनुः-
  - भारतीय राज्यहरु नेपाल संग मिलेर अंग्रेज विरुद्ध लढ्न चाहन्थे यस अगीनै पराजित गरेमा East India Company Government लाई खतरानहुने हुनाले युद्ध गर्न पुगेको हो,
- खुल्ला सिमाना वा प्राकृतिक सिमानाको अभावः-
  - दुबे राज्यहरु युद्ध गरेर प्राप्त गरेको भूमि भएको हुनाले खुल्ला सिमाना वा प्राकृतिक सिमानाको अभावको कारण सिमानामा संकासपद थियो, कस्को सिमाना कहाँसम्म थियो भन्ने बारेमा।

❖ तत्कालीन कारणः-

- स्यूराज र बुटवलको समस्या युद्धको तत्कालको कारण थियो, वि.सं १८०० देखी वि.सं १८७१ पृथ्विनारायण शाह देखी भिमसेन थापाको समय सम्ममा आउँदा नेपालको सिमाना पूर्वमा टिष्टा पशिचममा काँगडा सम्म फैलिएको थियो तर उक्त समस्याको कारणले गर्दा पूर्वको र दक्षिणको भाग East India Company Government को हुन पुग्यो र पूर्व पशिचम गरेर ४२ ठाउँमा सिमा विवाद थियो भने रौतहतमा मात्र २२ ठाउँमा सिमा विवादीत थियो।

- रौतहटका २२ वटा गाउँको सिमाको विवाद, East India Company Government का ब्रडाशा र नेपालका प्रतिनिधी श्री कृष्ण पण्डित बीच, छलफल भयो तर असफल भयो।
- स्यूराज र बुटवलको समस्यालाई लिएर टक्सारी चन्द्रशेखर उपाध्याय र East India Company Government का प्रतिनिधी ब्रडशा बिच वार्ता भयो बेतनियामा तर समस्याको समाधान नभएपछी Lord Hastings ले २५ दिन भित्र रौटहटका २२ वटा गाउँ र स्यूराज, बुटवल East India Company Government लाई न सुम्पिए युद्ध गर्ने चेतावनी दिए, यस चेतावनीमा युद्ध गर्ने वा नगर्ने विषमा छलफल भयो **बम शाह, रंगनाथ पण्डित, अमरसिंह थापा, दलभन्जन पाण्डे युद्ध नगर्नेमा थिए भने भिमसेन थापा युद्ध गर्ने पक्षमा थिए।** 22 April 1814 को दिन विना युद्ध East India Company Government ले ती थाउँ कब्जागरे पुनः 19 May 1814 मा नेपाली सेनाले त्यो थाउँ फिर्ता लि, यसमा १८ जाना अंग्रेजको ज्यान गयो भने नेपालका ५ जाना घाईते भयो, यस पछी East India Company Government का Lord Hastings नेपाल विरुद्ध युद्धको औपचारीक घोषना गर्यो यसमा East India Company Government को पूर्ण तयारी थियो।
- युद्धको तयारीका साथ बसेका East India Company Government हरुलाई आमना सामना गर्न **बलभद्र कुंवर नालापानी, अमरसिंह थापा सतलज, भक्ति थापा देउथल, बमशाह कुमाउँ गढवाल मा बसिँ विरतापूर्व लडेको थियो।**



❖ अंग्रेज नेपाल युद्धमा नेपाल पराजित हुनुको कारणः-

- नेपालमा सेना संख्या र हतियारको कमी।
- नेपालले सहयोग नपाउँनु।
- यातायात, रसदपानी, संचार औषधी उपचारको अभाव।
- अंग्रेजहरुको व्यापक योजना हुनु।
- नेपाल दर्वारमा एकताको अभाव।
- पशिचमी राजा र जनताको विरोध।
- आर्थिक कारण।

## ❖ सुगौलिको सन्धि

- 1 November 1814 बाट East India Company Government र नेपाल बीच सुरुभएको युद्ध सुगौली नामक ठाउँमा गरीएको सन्धिबाट टुङ्गीयो, नेपालीहरु सबै थाउँमा पराजीत भएपछी **28 May 1815 मा गजराज मिश्र, चन्द्रशेखर उपाध्याय र East India Company Government का प्रतिनिधी ब्रडशाह बीच सन्धिको वारेमा छलफल भयो यो सुगौलीमा भएको थियो,** यसमा East India Company Government ले ९ धारा को प्रश्ताव राखेकोमा, धाराहरुको बुढा नं ३, ७, ८, नेपालका प्रतिनिधिहरुले मन्जूर गरेको थिएन, त्यही पनी ९ वटा धाराहरु East India Company Government ले 9 December 1815 मा स्वीकृति गर्यो।

➢ East India Company Government ले राखीएको सन्धिको ९ धाराहरु,

१. नेपाल र East India Company Government संग स्थायी शान्ति र मित्रता कायम रहने छ।

२. युद्ध हुनु भन्दा अगाढी दुई देश बीचका विवाद ग्रस्त भू-भागहरुमा नेपालले आफ्नो दावी त्याग गर्ने। ती भू-भागमाथी EastIndia Company Government को अधिकारलाई स्वीकार गर्ने।



३. निम्न भू-भागहरु कम्पनी सर्कारलाई दिनुपर्ने;

**क.** काली र राप्ती नदी बीचको सबै तराई क्षेत्र।

**ख.** राप्ती र गण्डकी बीचको सबै तराई भाग।

**ग.** गण्डकी र कोशी बीचको सम्पूर्ण तराई भाग।

**घ.** मेची देखी टिष्टा सम्मको समस्थ भू-भाग।

**ङ.** मेची देखी पूर्वको सम्पूर्ण पहाडी भाग साथै नागरिकको किल्ला र जग्गा समेत गरी मोरङ्गदेखी पहाड तिर जाने नगरकोट

मार्ग र त्यस नजीकको समस्त भू-भाग ४० दीन भित्र गोर्खाली सेनाले खाली गर्नु पर्ने।

४. धारा ३ अनुसार जग्गा गुमाएको क्षतीपूर्ति २ लाख वार्षिक नेपालीले पाउँने।

५. नेपालका राजा र उन्का उत्तराधीकारीले पनी कालीनदी देखी पश्चिमका प्रदेश र त्यहाँ निवासीहरु संग कुनै सम्बन्ध राख्न पाउँने छैन।

६. नेपालले सिक्कीम्को भू-भागमा कुनै दावी गर्न नपाउँने, नेपाल र सिक्कीम बीच झगडा वा विवाद भएमा त्यस्ता विषयहरु East India Company Government समक्ष पेश गर्ने र कम्पनी सर्काले गरेको निर्णयलाई नेपालले स्वीकार गर्ने।

७. नेपालले ब्रिटिश सर्कारले गरेको पूर्व स्वीकृती विना ब्रिटिश, युरोपेली वा अमेरिहरुलाई आफ्नो सेवामा राख्न नपाउँने।

८. दुई देश बीच कायम भएको मित्रता एवम् शान्ति सम्बन्धलाई सुढृढ पार्न दुबै देशका राजदूत एक अर्को देशमा रहने।

९. यो सन्धिलाई नेपालमा राजाले १५ दिनभित्र हस्ताक्षर गरेर ब्रडशालाई बुझाउँने र ब्रडशाले १० दिनभित्र गर्भनर जनरलको स्वीकृत गराउँने।

- धरा नं ३ अनुसार जग्गा गुमाएको क्षतीपूति नेपाललाई वार्षिक पाउँने रु, दूईलाख, East India Company Government ले कर उठाउँन नसक्दा 8 December 1816, मा कोशी गण्डकी, गण्डकी रापती,को तराई भाग पुनः नेपाल ले फिर्ता पायो।
- दुबै देशका सिमा विवाद भएमा दुबै मुलुकका प्रतिनिधीहरु बसेर सिमा निर्धारण गर्ने।
- वार्षिक दुईलाख रु, नेपाल लाई दिन नपर्ने सर्तमा तराई सुपुर्द सन्धि समेत भयो।



- **4 March 1816 मा सुगौली सन्धि भयो**। यस्का सबै धाराहरु नेपालको विपक्षमा छन्,

❖ सन्धिपछी नेपालाई परेको नकारात्मक असर।

- १५ दिनभित्र सन्धिपत्र कम्पनी सर्कारलाई बुझाउँनु पर्ने बाध्यगा थियो, आवत जावतको रुपमा सुगौली बाट काठमाण्डौं सम्ममानै ७, ८ दिन लाग्थ्यो, यस सन्धिपत्रको विषयमा छलफल गर्न समेत समय नभएको थियो नेपालका राजालाई।
- महाकाली पारी र मेची पारी सबै हक त्यागनाले नेपालले आर्जना गरेको सबै सम्पत्ती गुम्यो।
- वार्षिक पाउँने दुईलाख पनी पछी नपाउँने भयो।
- नेपालको बाहीय सम्बन्धमा नकारात्मक असर भयो।
- धारा नं ७ र ८ नेपालको हीत विपरीत भएकाले, नेपालको स्वाभीमानमा आँच पुर्याएको देखिन्छ।
- नेपालले अंग्रेजहरुको प्रवेश गर्न नचाहे पनी प्रवेश गराउँन टेवा पुग्यो उक्त असमान सन्धिको कारणले ॥

---------